

क्वयेर युथ ग्रुप كُوِيِر يُتھ گُرُپ

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौं ।


**नेपाल संवत् ११४१ चौला २**

**२०७७ चैत ७ गते**




श्री सचिवज्यू,
कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय,
सिंहदरबार, यें (काठमाडौं) ।

**विषय : लैङ्गिक तथा यौनिक अल्पसंख्यक विवाह सम्बन्धीको मस्यौदा हामीलाई प्रत्यक्ष असर पुर्याउने हाम्रो सरोकारको विषय रहेकाले परामर्श र टिप्पणीको अवसर पाउँ ।**

महोदय,

उपरोक्त सम्बन्धमा महिला, बालबालिका तथा ज्येष्ठ नागरिक मन्त्रालयले लैङ्गिक तथा यौनिक अल्पसंख्यक विवाह सम्बन्धी नीतिको मस्यौदा तयार पारेको भनि विभिन्न आम सञ्चारका माध्यममा सुनिएको भएकाले उक्त मन्त्रालयलाई सोधपुछ गर्दा यस विषयमा concept note तयार भइरहेको र उक्त concept note यहाँ कानून, न्याय तथा संसदीय मामिला मन्त्रालयमा परामर्शको लागि पठाइएको भनि सूचना पाएका छौं । यसै क्षेत्रमा कार्यरत संस्था नील हिरा समाजलाई पनि यहाँको मन्त्रालयबाट टिकाटिप्पणीको लागि अवशर दिइएको जानकारी पायौं ।

हामी क्वयेर युथ ग्रुप (Queer Youth Group) लैङ्गिक तथा यौनिक अल्पसंख्यक जनसमुदायको हक अधिकारको लागि वकालत गर्दै आएको समूह हौं भने उपरोक्त प्रस्तावित कानुनी व्यवस्था हामीलाई प्रत्यक्ष असर पार्ने हुनका साथै हाम्रो सरोकारको विषय हो ।हामी यस मस्यौदालाई अध्ययन, गरी परामर्श एवं टिप्पणी दिन चाहन्छौं । हामी क्वयेर युथ ग्रुप सन् २०१८ देखि loose network को रूपमा सुरु भएका हौं भने सन् २०२० मा Not-for-profit company का रूपमा दर्ता भएका हौं । लैङ्गिक तथा यौनिक अल्पसंख्यक जनसमुदायको हक हितका निम्ति स्थापना भएको यस समूहलाई पनि यस समुदायसँग सरोकार रहेको संवाद, परामर्श लगायतका विषयवस्तुहरूमा समावेश गर्न अनुरोध गर्न चाहन्छौं ।

यस क्वयेर युथ ग्रुपलाई सम्पर्क गर्न सकिने ईमेल queeryouthgroup.nepal@gmail.com हो ।




रुक्शना कपाली, कार्यकारी निर्देशक


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/
 qygnepal  QueerYouthGroup